# प्रेमोत्कर्ष

फाल्न खोजिरहेछु
आफैलाई उधिनेर
भित्रभित्रै कुहिएका उनका सम्झनाहरु
र, नजिक नआऊ
कोही पनि -मारुनी बनेर
म जीवनको छानो टालिरहेको छु ।

छिट्टै, एक साँझ
सब सल्किनेछ
पोष्टकार्डहरुसँगै उनको तस्वीर पनि
र, हृदयको यही झुम्रोले पुछ्नेछ
मनको शिलामा लेखिएका
काँचो प्रेमका अक्षरहरु...
हो, कोही नआऊ मेरो छेउमा टाँसिन
प्रेमको चुल्ठो बाटेर
म जीवनको भीरमा बाटो खनिरहेको छु ।

प्रेममा जब अंगहरुको खरिदबिक्री हुन्छ
शरीरका रंगहरुको भाउ हुन्छ
र, आडम्बरको खोक्रो मखुण्डोको सम्मान हुन्छ
त्यसकारण
मान्छेहरुको जीवन भत्किरहेको हुन्छ
सम्मान र सभ्यता मक्किरहेको हुन्छ
र, म जिन्दगीकै नक्सा बिगारिरहेको हुन्छु ।

*१० वैशाख, ०६३*

ó

# विम्बपीडा

उ त के दुख्छ र मान्छेलाई
जति घाउको सम्भावना दुख्छ ।
मृत्यु पनि के दुख्छ र मान्छेलाई
जति मृत्युको सम्भावना दुख्छ ।

पखालिसकेकी छे उसले
लोग्ने नाउको सिन्दूर -सिउँदोबाट
चुडालिसकेकी छे
पोतेहरुको बन्धन गलाबाट ।
र पनि
त्यही सिउँदो र गलामा
किन दुखिरहन्छ -मरिसकेको खसम ?

निको भइसकेर पनि घाउ
खतहरुमा दुख्छ
मरिसकेर पनि अम्मली
किन लतहरुमा दुख्छ ?

आमाको मृत्युपछि पनि
त्यो घरको चुल्हो उस्तै छ
बलेसी, आँटो र सिलौटाहरु उही नै छन्
उस्तै छ आँगन र घर
तर चिहानमा लाश जलाएर
घर फर्कंदै गर्दा
किन दुख्छ छोरालाई त्यो घर ?

फूल चढाएर छुट्टिएपछि देउरालीमा
म फर्केको छैन -त्यो गाउँ
र, आजकल
पत्रपत्रिका वा शब्दकोशका पानाहरुमा
'देउराली' देखेपछि

किन ढुक्क फुल्छ -मेरो मुटु ?
किन दुख्छ मलाई त्यो देउराली ?

घाउ त के दुख्छ र मान्छेलाई
जति घाउको सम्भावना दुख्छ ।
मृत्यु पनि के दुख्छ र मान्छेलाई
जति मृत्युको सम्भावना दुख्छ ।

*७ वैशाख, ०६३*

á

# अभाव यात्रा

फर्, अभावका उपहार हुन
यी प्राप्तिका पोकाहरु
न कहिल्यै अभाव निखिन्छ
न सकिन्छन् -प्राप्तिका पोकाहरु ।

पाउनुसँग सम्झौता गरेर
जिउनुको अभावमा
मान्छेहरु बाँचिरहेछन् -मूर्दा ।

संसारमा राजनीति कहिले सकिएला ?
र, कहिलेसम्म अभाव रहला राजनीतिको ?
समवेदनाको कारखाना खोई ?
र, उत्पादन भइरहन्छ
आँखामा आँसु ?

अभावस्वयम् अभाव
पाउनु पनि अभाव
जीवन फरक अभाव
र, जगत अर्कै अभाव

यो अभावहरुको संसारमा
सिर्फ नयाँ अभावको खोजी
सार्थक जीवनको अभ्यास मान्नुछ ।

संसारमा प्राप्ति छ
र प्राप्तिकै अभाव छ ।
संसार भरिपूर्ण छ अभावले
जीवन पुरिएको छ अभावले
मात्र
आफूलाई रित्तो सम्झिएर
आफूभित्रको अभाव देख्दैन -मान्छे ।

अभाव एउटा सम्भावना
सम्भावना एउटा सफलता
र, सफलता फेरि अभाव ।

मान्छे, सम्झिन्छ-
अभाव त रित्तोपन, हो -नाङ्गो ।
विचरा ! गीताको सार पढेर
रित्तै आएको र रित्तै जानेमा मौन बस्छ ।

तर, याद राख मान्छेहरु !
अभाव त आफू रित्तै आएर
प्राप्त गरेको सम्पत्ति हो
र, यही अभावका प्रभावले
गीतामाझैं रित्तै फर्किंदैन मान्छे ।

á

# खेताला जीवन

र्मचारीजस्तै छन् -नागरिकहरु

तल्सिङ्जस्तै छन् -शासकहरु
जीवन पर्मजस्तै लाग्छ
र, नागरिकता बोकेर -मानिसहरु
जागिर खोजिरहेका छन् -नेपालमा ।

स्वाभिमान भाडामा बिकेको छ
जीवन तलबभत्तामा मासिएको छ
सिर्फ -खेताला भएर ।

ड्याकेर आफ्नै शिर
नमस्कारको खरिदबिक्रीमा ।
हरेक जीवन -एउटा पर्म
शायद,
निम्ठो दिएर भुसी लिनुको आनन्द (!)
यसरी नै बित्दैछ -यिनका दिनहरु ।

आफ्नै घाउ कोट्याएर
मासु खानुको स्वाद (?)
यिनीहरु शाकाहारी हुन -साहुजी
सिर्फ, आफ्नै घाउ खान्छन्
आफ्नै घाउ बेच्छन् र किन्छन् ।

*१३ साउन, ०६३*

á

# काठमाडौंको रगत

भ बग्दैछ यो वागमती
जसरी
इतिहासका खोल्सीहरुमा बगे
काठमाडौंको रगत ।

पखाल्ने प्रयास गर्छे -ऊ
टुकुचा र आर्यघाटहरु
र, पवित्र पार्न खोज्छे -पशुपतिका भक्तहरुलाई
जसरी
दुर्व्यवस्था बगाउन खोज्छ
काठमाडौंको रगत ।
र, स्वतन्त्र पार्न खोज्छ -देशका भक्तहरु

खडेरीपछि
आखिर, वर्षा हुनैपर्छ ।
वागमतीलाई
हिउँद लाग्दैन संधै
र, सुसाइमात्र रहनुहपर्दैन उसले ।

अनि
मान्छेका असभ्यता बोकेर काँधकाँधमा
सदा शक्तिहीन हुन्न वागमती ।
बदलिन्छन् -मौसम र ऋतुहरु
फेरिन्छन् -समयका साँधहरु
र, पखालिन्छन् -टुकुचा र आर्यघाटहरु
अर्थात्
वागमती -आगो बोकेर आउँछे कुनै दिन
जरुर त्यसपछि
सकिनेछ टुकुचाको प्रदुषण
निखिन्छन् -राष्ट्रियतामा सल्केका धुनहरु
मासिनेछन् -राष्ट्रवेगका उल्झनहरु
चाहे टाउकै छिनाउन किन नपरोस् -इतिहासको
छेदन गरेर अघि बढ्नैपर्छ -वागमतीले
ऊ त रगत हो -काठमाडौंको

*१० वैशाख, ०६३*

á

# पर्ख, एकैछिन पर्ख

र्ख, एकैछिन पर्ख
मलाई विश्वास छैन -तिम्रो समर्पणसँग
मलाई भर छैन -तिम्रो कसमसँग
किल्किले छोएर
वा छातीमा हात राखेर
अविश्वासको अङ्ग प्रदर्शन गऱ्यौ तिमीले ।

तिम्रो प्रेम
तिम्रो कसम
र, तिम्रो जीवन
त्रिभुज बनोस् -ज्यामितीय हिसाबको
म कामना गर्नसक्छु -अक्षरहरुमा
अमर बनोस् तिम्रो प्रेम
तर, घाँटीका नसा छामेर
या छातीका हाड छोएर
फेरि कहिल्यै
विश्वास बदर नगर ।

स्वार्थ छैन नभन -आफ्नो मायामा
अविश्वास छैन पनि नभन -प्रेममा
यदि यसै भनिरह्यौ भने
म अन्धविश्वास र अविश्वास देख्छु तिम्रो जीवनमा
म अन्धकार पाउँछु तिम्रो मायामा
रित्तो समर्पण भिरेर
अन्धो विश्वासको यात्रा
जीवनको भीरमा लडिन सक्छ
त्यसैले पर्ख
एकैछिन पर्ख !
मलाई विश्वास छैन -तिम्रो समर्पणसँग
मलाई भर छैन -तिम्रो कसमसँग
किल्किले छोएर
वा छातीमा हात राखेर
अविश्वासको अङ्ग प्रदर्शन गऱ्यौ तिमीले ।

हो, मलाई अविश्वाससँग लड्नुछ
धोका, चोट र पीडासँग जुध्नुछ
तिम्रो अविश्वास लिएर
मैले मेरो अविश्वासको हत्या गर्नुछ
तिम्रो पीडा लिएर
मैले मेरो पीडाको दाहसंस्कार गर्नुछ
र, पनि तिमी भनिरहेकीछ्यौ
खोक्रो विश्वासको दसी जुटाउँदै
'मेरै कसम मसँग अविश्वास छैन
म धोका मन पराउँदिन ।'

हो, त्यसकारण पर्ख
एकैछिन पर्ख
मलाई विश्वास छैन -तिम्रो समर्पणसँग
मलाई भर छैन तिम्रो कसमसँग
मलाई भर छैन तिम्रो कसमसँग
किल्किले छोएर
वा छातीमा हात राखेर
अविश्वासको अङ्गप्रदर्शन गऱ्यौ तिमीले ।

*४ भदौ, ०६३*

á

# झिंगाहरु

ल्लिपाठको विगत
धौ-धौको वर्तमान
र, धिक्कारको भोलि
बाँचे पनि
हात जोडेर मन्दिर जाँदैनन्
झिंगाहरु ।

प्रत्येक प्रहर
हावाको उडानमा
हत्केलाको षड्यन्त्र गन्हाउँछ
अपितु

उन्मादको तोरणमा
झुण्डिइरहन
कायरता पिउँदैनन्
झिंगाहरु ।

जीवनग्रहमा ग्लानि उम्रिनसक्छ
जीवनवृक्षमा ऐजेरु पलाउन सक्छ
तर
खेद गन्हाउँदैन झिंगाहरुलाई
उनीहरु
भ्रम बाँचिरहेछन् ।
भ्रमको बस्तीमा
यथार्थको स्याल पसेपछि
मृत्यु त उनीहरु
थालमै पिइदिन्छन्
तर
हात जोडेर मन्दिर जाँदैनन्
झिंगाहरु ।
ǿ

# मूर्दाघर हुँ म

त्युदण्ड सुनाइएका
मेरा सपनाहरुको घर हुँ म
लिपौंला, प्रेमको पिंढी भनेर
फुकौंला आगो-जीवनको भनेर
नआउनू कुनै किराँतिनीहरु चुल्ठो हल्लाउँदै ।

नजलेरै खरानी भइसकेको
मेरो शरीरछेउ उभिएर
छमछम नाच्दैछन् -यी तरुनीहरु !
गीत गाइरहेका छन्
जुवारी खेलौंला भनेर -मसँग
मानौं म
कुनै नायक हुँ संयोगान्त एउटा चलचित्रको ।
र, नायिकाहरु
प्रतिस्पर्धामा उत्रिएका छन्
मलाई अँगाल्ने खेलका लागि ।

ओ, अन्तिम घडीका मेरा सपनाहरु !
आत्महत्या गर्नुपर्थ्यो तिमीहरुले
किन जिउँदै छौ मृत्युदण्डका लागि ?
थाहा थिएन आत्महत्या मृत्युदण्डभन्दा उत्तम हुन्छ ?
र पनि तिमीहरु बाँचिरह्यौं ।
अब अन्तिमजवाफ देऊ ।
अपराधी, तिमीहरु हौ कि म?
या समयका पिप्साहरु ?

मात्र मलाई थाहा छ
परबाट आइरहेका छन्
जीवनका हुरी बोकेका आइमाईहरु
यहाँ आइसकेपछि
नमस्कार गर्नेछन् तिनीहरुले -मलाई
तर म
नमस्कार फर्काउन सक्ने छैन
किनपनि भने
मृत्युदण्ड सुनाइसकेको छु मैले
मेरा सपनाहरुलाई ।

वास मागिरहेका छन्
मेरो जीवनको आँगनमा उभिएर उनीहरु
देउसी खेलिरहेका छन् -देउसेहरु
दक्षिणा मागिरहेका छन् -भैलीहरु
भन्छन् -झरी परेको रात

आँगनमा नभिजाऊ पाहुनाहरुलाई
तर म ढोका खोल्न सक्दिन
किनपनि भने
मृत्युदण्ड सुनाइएका सपनाहरुको घर हुँ म ।

त्यति त भनिदेऊ ए, रुखहरु
छन् भने ए, देवताका रुपहरु
योसँग अब यसकै सपनाहरु पनि छैनन्
योसँग अब यसकै विपना पनि छैन
सबकासब लाश भइसकेका छन्
यो लाशहरुको घरजस्तै भएको छ
र,
के देउसी खेलिरहेका छौ ए -मूर्दाघरको आँगनमा ।

*१८ जेठ, २०६३*

á

# आक्रान्त म

ण्ठित मनको वरण्डामा
गर्भवती सपनाको
जगल्ट्याइँपछि
लाग्छ,
म मलामी बाँचिरहेछु
आफ्नै गन्तव्यको ।

च्याँख्ला पस्दैगरेका
रातका चानाहरुमा
ऐठनको भूतले बलात्कार गर्दा
निमोठीरहेको हुन्छु
जिजीविषाको थून ।

ग्लानिको कुहिरोले
सफलताको ढिस्को छोपेपछि
रित्तो आँखामा
जिब्रो लतारेर झुण्डिरहेको
एउटा लाश
हरेक चोक्टा वर्तमानमा
मलाई अभिषेक गर्छ ।

á

# खण्ड-खण्ड आकाश

बसम्म विभाजित हुन्छ
रगतको रङ्ग
छालाका पत्रमा छुटिन्छन् -मानिसहरु
हो, मानिसहरु जबसम्म मानिस हुन सक्दैनन्
र, जबसम्म मृत्युदण्ड पाउने छैन
विभाजित बदनामले
एड्ससंक्रमित विश्व
शरीर बदल्न चाहन्छ ।

पाउ परिरहन्छन् मजदुरहरु
र, जबसम्म लात हानिरहन्छन् -मालिकहरु
गरीब-पसिनाका ढिक्काहरुमा
जीवन फालिरहन्छन् -ज्यामीहरु
र, त्यसकै सिनो चपाइरहन्छन् -मालिकहरु
हो, मानिसहरु जबसम्म मानिस हुन सक्दैनन्
न तिमी मेरो महलमा छिर्न सक्छौ
न म तिम्रो झुप्रेमाया लिन सक्छु ।

कौडीमा बिक्छ जबसम्म जीवनको छानो
मालिकहरु मृगौला र मुटु किनिरहन्छन्
मजदुरहरु मुटु र मृगौला बेचिरहन्छन्
टाउको जबर्जस्ती खरिद हुन्छ

जसको रगत र पसिनाको दोभानमा

आनन्दको डुंगा चलाइरहेछन् -मालिकहरु
हो, जबसम्म मानिसहरु मानिस हुन सक्दैनन्
रगतको रङ्ग एउटै हुँदैन
त्यसबेलासम्म
बलिरहन्छ, जलिरहन्छ -जंगलीमशाल ।

अक्सिजन अर्थात, समान वितरण
जब घामले बराबर किरण बाँड्छ
चन्द्रमाले बराबर उज्यालो दिन्छ
र रगत बराबर रातो हुन्छ भने
बराबर हुनुपर्छ -मानिसहरु ।

*१३ साउन, ०६३*

ó

# समयको आत्महत्या

रम्भ
भरपर्दो एउटा आश्चर्य
सम्भवसत्य
वा समयको अन्त्य
एउटा अविश्वस्त-यथार्थ ।

मर्न सक्छन् युगहरु
सकिन सक्छ पृथ्वी
वा आत्महत्या गर्न सक्छन् -जीवहरु
तर, असम्भव समय
हो, यही चेतना छ -मान्छेसँग ।

.....तर
प्रारम्भ
भरपर्दो एउटा आश्चर्य
सम्भव-सत्य
वा समयको अन्त्य
एउटा अविश्वस्त-यथार्थ ।

समय कुनै युग, पृथ्वी वा जीवन होइन
कुनै प्रविधि वा विज्ञान पनि होइन
र,
विश्वासमा बाँचेको देवता पनि होइन
सायद, भ्रुट अर्थमा
उत्पत्तिपछि अन्त्य सम्भव हुन्छ
र, समय एउटा सत्य-भ्रुट हो ।

जरुर,
अन्त्ययात्रामा छ समय
मात्र,
औसत-आयु थाहा छैन -मान्छेहरुलाई
र, दावी गर्न खोज्छन्
यो असम्भव सत्य हो ।
तर, विश्वस्त छ -मान्छेजस्तै
महासागरमा डुबेको कमिला पनि
कि, यसको अन्त्य असम्भव छ ।

दिन, महिना वा वर्षहरुसँगै
जब निखिन्छ मान्छेको आयु
शताब्दी, युग वा पृथ्वीवर्षहरुसँगै
अन्त्य हुनेछ -समय पनि
र, यतिबेला
कल्पना गर्न सक्दैनन् -दिनमा बाँचेका जीवहरु

हो, त्यसैले
एउटा घाट छ -समयको

जहाँ यसको दाहसंस्कार हुनेछ
तर, त्यसअघि
तरबार, खुकुरी, बन्दूक
वा बमका डल्लाहरुले ऊ मर्ने छैन
पृथ्वीलाई नै हम्मर बनाएर
उसको टाउकोमा बजारे पनि
अहँ, असम्भव छ -हत्या
मार्नसक्ने छैन -केही, कसैले पनि
तर, ऊ मर्नेछ....... जरुर ।
किनपनि भने
प्रारम्भ
भरपर्दो एउटा आश्चर्य
सम्भव सत्य
वा समयको अन्त्य
एउटा अविश्वस्त यथार्थ ।

*३० साउन, ०६३*

ợ

# सौम्य विधि

हिरो फुल्दा
आकाश सौम्य देख्छु
फेरि सौम्य देख्छु
नांगो आकाश ।

बूढो पहरो औधि राम्रो देख्थें
पहिरो त्यसकै छातीमा पछारियो
अपितु
पहरो, वीरपहरो देख्छु
राम्रो देख्छु ।

अकालमै अस्ति
मेरो छोरा मऱ्यो !
बाऱ्हैमास असारको पन्धैमा
खडेरी पिउँदै
जीवन लतार्नु किन ?
'राम्रो भयो'
ợ

# पतीत मान्छे

णस्तरचिन्ह नालायक जिन्दगी
तैपनि पिए -बैरीहरुले
चोक-चोकमा छक्याएर पिए
झुक्याएर त आफ्नै आफ्नाले पनि पिए
र, रित्तिएँ -म ।

थाहा छ
बाँचुञ्जेल ताछ्नेछन् यिनीहरुले -मलाई
चुस्नेछन् -आएसम्मको रस
र, फेरि भन्नेछन् -गुणस्तरहीन ।

जरुर, पतीत छन् -यस युगका मान्छेहरु
हरेकलाई लाग्छ
जीवन कुनै खुद्रा पसल हो
मात्र, नाफाका लागि खोलिएको ।

चिनीमा चामल मिसाइन सक्छ
पेट्रोलमा मट्टीतेल घोलिन सक्छ
तराजु न हो आफ्नै हातको
बाङ्गो पारिन सक्छ
जसरी पनि नाफा चाहिएको छ
र, जीवन खुद्रापसल हो
त्यसैले पतीत छन् -यस युगका मान्छेहरु ।

षड्यन्त्रहीन सम्मानको अभाव
प्राप्तिविहीन प्रेमको अनिकाल
ठेकीव्याजहीन साँवा छैन
जसरी लोलुपताहीन कर्म छैन
युग यसरी नै चलाएका छन् -पतीतहरुले
जहाँ
जीवनको स्वाद अन्त्य भइसकेको छ ।
र, मान्छेहरु
रसहीन भइसकेपनि
जीवनको चुइँगम चपाइरहेछन् -चिनी थपेर !-

*१३ साउन, ०६३*

á

# सम्झेर मरेको छोरालाई

ट्टीपसल्नीले झुन्ड्याएकी
सुकुटीवैंश
पिउँदै ठर्राको सितनमा
मैले मेरो मरेको छोरालाई सम्झें ।

हरेक बिहान
मेरो मरेको छोरो -सूर्य जन्माउँथ्यो
सायद ऊ ईश्वरकै पुर्खा थियो
र हरेक साँझ
चन्द्रमा झुन्ड्याएर आकाशमा
छोइडुम खेल्थ्यो ।

मेरो छोरो
कुनै दिन भुर्र उड्न सक्थ्यो
मलाई थाहा छ
मेरो छोरो
ध्रुवतारा बन्न सक्थ्यो ।

फुत्तै उम्किएर समयको फिर्का !
मेरो छोराले
आफ्नै जीवनको गोठ भत्कायो
र किचिदियो
मेरो जीवनको लैनो भैंसी ।

आज यो भट्टीमा म सुकुटी चपाइरहेछु -जीवनको
र ठर्रा पिइरहेछु -आफ्नै रगतको
सम्झेर मरेको छोरालाई ।

बाबु ! तिमी समय थियौ
धरती थियौ छोरा ! तिमी
तिमी आकाश थियौ
आज सारा गुमेको छ ।

के थाहा तिम्रो मृत्युलाई ?
सारा गुण्डा र बर्दीवालहरुसँग
जुधेर
विहे गरेको थिएँ
तिम्री आमालाई ।

á

# अनभिज्ञ बहाव

रि अर्को हार भयो
एउटा चट्टानसँग
सायद जान्दै जानिन मैले
जीवनको हिसाब मिलाउन ।
ताछें, ताछिरहें
सपनाको एउटा तरुल ।

जुधें, मस्त लडिरहें
र जितें
औंसीको एउटा कालो जून ।

घोटें, रेटें र उज्याइरहें
ढुँडी परेको आँखा
एउटा पत्थरमाथि
भुत्ते खुकुरीझैं ।
उसैगरी
यसपालि पनि फेरि अर्को हार भयो
एउटा चट्टानसँग
सायद जान्दै जानिन मैले
जीवनको हिसाब मिलाउन ।

ढुंगाको एउटा
बौलाहा देवता
छातीमा मुटुको
अपहरण गर्न खोज्छ
प्रतिशोधमा....
बजारिरहेछु-
आफूलाई
र, पनि
फेरि अर्को हार भयो
एउटा चट्टानसँग
सायद जान्दै जानिन मैले
जीवनको हिसाब मिलाउन ।
á

# विश्वासको अवसान

श्वासको अवसानपछि
त्यो देश 'बदर' भयो
र त्यहाँ
आमाहरु मध्येदिनमै बलात्कृत भए -असनचोकहरु ओछ्याएर ।

सम्झौताको सहादतपछि
मृत्युका सुकुलगुण्डाहरु
जीर्ण अस्तित्वमाथि नाँच्न थाले,
वलिष्ठ पाखुरीका मासु कुहिंदै झर्न थाले
र गन्हाउँदा गुराँसको ओछ्यानमा
चन्द्र-सूर्यको लाश पल्टियो ।

आँखाको उजागरी,
माटोको मौनता,
र मान्छेको सम्झौता-विश्वास चिप्लिएपछि
कुनै ग्याँसच्याम्बरभित्र
किरियापुत्रीजस्तै
'मेरो देश' नामको त्यो देश
अदृश्य एउटा मसानघाटमा
दौडिरहेछ !

बाईस वर्ष दरबारको पुजारी बाँच्ने
एउटा ब्राह्मणलाई दिइएको
मृत्युपूर्जी अथवा मृत्युदण्डजस्तै
गोर्खाली लाहुरेले
धिक्कारिरहेछ राष्ट्रसेवा (?)
र कुल्चिरहेछ जयगान, देशको ....(!)

á

# कालो शून्य

किलामा
कुण्ठैकुण्ठाको सगरमाथा च्यापेर
किराग्रस्त
सिनोझैं
विगत, पाजी विगत ।
लमतन्न मझेरीमा
गुँडुल्किरहेछ ।

काला पुतलीहरु
गुलाफ चुम्न लम्किरहेछन्
अपितु
काँचका सर्पहरु
सल्बलाइरहेछन्
मेरो
पैताला ओढेर

आँखाको बादलमा समाहित
तर्पणको 'बूँद'
निशाकरझैं
जूनकिरी बनेर
मनकी रजनीमाथि
कालो आक्रमण
गरिरहन्छ ।
á

# निस्पट्ट जीवन

रीले उडाइरहेछ जीवनका पातहरु
हाँगाबिंगा भाँचिसके -सब गोठालाहरुले
अझ विश्वविद्यालयहरुमा
'बोक्राको महत्व' पढाइँदैछ
अब के बाँकी रहला र
जीवनहरुका अस्तित्व (?)
डँढेलोको उज्यालोमा
वास प्रतिस्थापन गरिरहेछन् चराहरु
भल पसेर जीवनको ढुकुटीभित्र
धमिल्याइरहेछ जिउनुको समय
ए, घाँसेदिदीहरु !
डोकोमा बोकेर
किन गोठेमल बनाइरहेछौ
त्यो सुन्दर जीवनका पातहरु (?)

सिस्नोको फूल टिपेर
शिर सजाइरहेछन् -उनीहरु
काँधमा आफ्नै बद्नामको हलो बोकेर
जीवनको बाउसे गरिरहेछन् -पुरुषहरु
खडेरीमा आगो लागेको खरपाखो
र, वर्षात्मा पहिरो खसेको मूलबाटो
शायद,
लङ्गडो घोडा
र, यो जीवनको कथा (?)

फुस्फुसी उडाइरहेछ चुरोटको धुवाँ
तन्तनी पिइरहेछ जीवनको झोल
ए ! भट्टीपसल्नी दिदी !
त्यो सम्झना/बिर्सनाको सेकुवा बेचेर
आफ्नै जीवनलाई सुकुटी बनाइरहेछौ (?)

*२० साउन, ०६३*

á

# आमा र म

न्दर सपनाहरु बोकेर
म यो कुरुप शहरमा उभिएको छु ।
आमा,

चरचर फुटेका हजुरका पैतालाजस्तै
मेरा पनि
गन्तव्यका पाइलाहरुको
रेखा-रेखा फाटेको छ
चैतमा धाजा फाटेको टारीखेतजस्तै ।

आमा,
बलिराखेको टुकीले
उज्यालोमात्र दिंदैन
धुवाँको मुस्लो पनि फ्याँक्दोरहेछ
धोतीफरिया
र गुन्यूचोलोको
सपना पर सारेर
हजुरले गाउँमा
मेरा लागि 'परेवा भाकल' गर्नुभयो
आमा,
म त यो बिरुप शहरमा
हरेकदिन
सपनाहरु तुहाइराखेको छु
रहर,चाहना र लक्ष्यहरु मारिराखेको छु
हरेक पल-विपनाहरु
हड्डी चुस्छन् -आमा, मेरो
मलाई पनि
हजुरलाई जस्तै
जलिराखेको टुकीलाईझैं
आफ्नै उज्यालोले अँध्यारो पारेको छ
आफ्नै जिन्दगीले मूर्दा पारेको छ ।

सियोका प्वालमा
कटनको धागो घुसार्न खोज्दा
जसरी हजुरको हात काम्छ
त्यसैगरी हो आमा,
यी हरेक मान्छेका अनुहारले
मेरो पनि मन कमाइराख्छ ।
यो अधर्मी
र पापीहरुको संसार रहेछ
माकुरालेझैं
आफ्नै आमाको हातखुट्टा काटेर
भाग लगाउँदारहेछन्, आमा
छोराहरु -यो शहरमा ।

गाउँमा,
घरको दैलोमाथिको मेरो फोटो
आह-मेरो जेठो छोरा !
सूर्यजस्तै चम्किलो तेरो अनुहार
तैँले धेरै गर्नुपर्छ बाबु
ठूलोमान्छे हुनुपर्छ
यी बाउआमाका लागि !

मेरो त्यो बालतस्वीरमाथि
फेरि-हजुरका आँखाबाट
आँसुका ढिक्काहरु चुहिएलान्
आमा,
मलाई त्यसरी
आँसुका झरीले नगलाइदिनुस्
खोकिलामा च्यापेर
मेरो फोटो
मुटुको ढुकढुकी नरोक्नुस् -आमा

म शहरमा पनि
म सपनाहरुमा पनि
म गन्तव्यहरुमा पनि
र हजुरसग पनि
कति ठाउँहरुमा
कति दोबाटाहरुमा -मरिरहूँ !
á

# सम्झनाको तमाखु

खाको चिलिममा

पिरतीको पातो घोप्ट्याएर
पछि
क्यान्सर लाग्ने
जान्दा-जान्दै पनि
म
तमाखु तानिरहेछु
तिम्रै सम्झनाको ।

*११ फागुन, ०५८*

# निफर जिन्दगी

रोटको बींड निचोर्दै
धुवाँ चुसिरहेको ओठसँग
मेरो प्रत्येक प्रश्नको
मात्र यही जवाफ छ
निफर जिन्दगी ।

सिन्दुर बेचेर पनि
एउटा पोथी टाउकालाई
ऊ नाफा या नोक्सानहीन
ढक बनेको छ
सायद शून्य-शून्यको
भँगालो हो ।

त्यान्द्रा-त्यान्द्रा भूत केलाएर
आगतको
ऐंजेरु पहाड
स्वात्तै निल्ने
मुख बाइरहेछ ।

वर्तमानलाई
स्फटिकको प्यालामा
धड्धडी पिइरहेछ -रमरम जिब्रोसँग
तर मेरा प्रत्येक प्रश्नको
मात्र यही जवाफ छ
निफर जिन्दगी ।

चट्टानछाती
या छातीचट्टान बनोस्
अभिशप्त आँखा
चुरोटको भंगालिएको धुवाँसँग
आकाश चुम्ने
उत्कण्ठा पोख्छ ।

मझेरी लमतन्न सुत्नै मान्दिन
अब त
गन्तव्य भास्सिसकेको छ
झाँक्रो फिजाउँदै
सर्प नजिकिरहेछ
र, लम्किरहेछन् उसलाई अँगाल्न
कंकालका जुलुसहरु ।

बगर लत्पतिएको
छाती पनि
मसानघाट बाँचेको छ,
मूर्दा पिइरहेको त्यो मान्छेसँग
मेरो प्रत्येक प्रश्नको
मात्र यही जवाफ छ
निफर जिन्दगी ।
ά

# नाभी बिर्सेर

ग्नै खोज्यो, खोजिरह्यो
थूक ढोलेर त्यो माटोमा ।
एक थोपा पसिना चुहाएन,

मेहनतको भिल्को भ्फोसेन
पट्पटी फुटेर-
'बाँझो'
उसैलाई गिज्याइरहेछ
जहाँ उसको नाभी गाडिएको थियो ।
कैयौं चट्टान पग्लिए छातीमा
वसन्त ओर्लिए धर्तीमा
'बाँझो ऊ'
छेक्न नचाहेरै पनि
परिवर्तन छेकिरहेछ
सायद
उसले त्यो एक चोक्टा माटो पनि
आफूमा अटाउन सकेन
स्वार्थको सहर पसेपछि
जहाँ उसको नाभी गाडिएको थियो ।

गलामा रालोले डाम मारेको छैन
मस्त वैंशमा छे
उसलाई हुर्काएकी कोक्रो ।
हिजोआज
सिस्नो जन्मेर
चुसिरहेछ आफ्नै आमालाई
घृणा उम्लेर त्यही माटोले
बलात्कार गरिरहेछ
आफ्नै आमालाई
जहाँ उसको नाभी गाडिएको थियो ।

भाग्नै खोज्यो, खोजिरह्यो
थूक ढोलेर त्यो माटोमा
एक थोपा पसिना चुहाएन
मेहनतको भिल्को भ्फोसेन
पट्पटी फुटेर
'बाँझो'
उसैलाई गिज्याइरहेछ
जहाँ उसको नाभी गाडिएको थियो ।
ά

# फरकहरु

र्रो बनाएको छु -मैले मुटुलाई
र, भ्फटारो फ्याँकेको छु
एउटा लाशको छातीमा
घुम्न सक्दैन
जरुर, मलाई थाहा छ
तर लाशभित्रको मुटु
घुमिरहेको छ -मेरो छातीमा ।

झण्डा बनाएर बोकेको छु -मैले
स्मृतिको पेटीकोट
तर
मेरो तस्वीरको पर्दा मेटिएको छ
स्मृतिको मगजबाट

जिउँदो आस्थाको खोकिलामा
आत्महत्या गरिरहेका
मेरा सपनाका लिखाहरु
निरन्तर जलिरहेछन् -समयको चिहानमा
अफसोच
बलिरहेको छ -स्मृतिको दागबत्ती
मेरो मनको गुफाभित्र ।

*२० वैशाख, ०६३*

ά

# इतिहासको कालो धब्बा

रता र बर्बरताको अवसानपछि
त्यो कटेरोभित्रबाट
जब भालुहरु बाहिर निस्केका हुनेछन्
गोर्खाली खुकुरी बोकेका गोठालाहरुले
एक-एक ताछ्नेछन् तिनका नाकहरु
उतार्नेछन् छालाहरु
र भित्तामा झुण्ड्याउनेछन्
इतिहासको कालो धब्बा !

हाँस्नै त भदौरेझरी रोएर पनि हाँस्न सकिन्छ
अथवा समुद्रै पोखेर आँखाबाट
बगेर आँसुका छालहरुसँगै पनि हाँस्न सकिन्छ
तर हामीले अभिनयको हाँसो हाँसेनौ
थुक दलेर आँखामा हामीले रुन पनि सिकेनौं
मखुन्डो भिरेर पनि हामी हाँस्न सक्दैनौं ।

तर
यी गेग्रनहरु पन्छाएर
र फ्याँकेर कालकूट यो सुन्दर घडाबाट
एउटा सुनौलो हस्ताक्षर गर्नेछन्, आमा तिम्रा छोराहरुले
र सुन्दर हाँसोको गहिरो समुद्र छचल्किनेछ तिम्रा आँखाहरुमा
साँच्चै अहिले त्यही दिनको प्रतीक्षामा छन् समयका जन्तीहरु ।

सकिञ्जेल पुछ्दै जाऊ आमा,
पछ्यौरीको फेरले आँखाको डिल
अब उज्यालो एकदमै नजिक छ
बिस्तार बिस्तार सकिदैंछ रण्डीहरुको रत्यौली
त्यसपछि आँसुले भिजेको पछ्यौरी फ्याँकेर
उन्मुक्त अँगालोमा बाँध्नेछ्यौ
देशको मानचित्र वरिपरि घुमिरहेका सेता परेवाहरु ।
ǿ

# कुण्ठाखोंचबाट

खा परेपछि
आस्थाको टालोमा
मान्छेहरु
विश्वासको आशौच बार्दारहेछन्
र, धेरै दिनदेखि
म यही देखिरहेको छु
आस्थाको टोपीभरि
जुम्राहरुको जुलुस छ ।

घाटहरुमा
मान्छेहरु
जलाइरहेछन् स्वाभिमानको लाश
र यसपछि
यति उत्ताउलो बनेर आउनेछ
समयको आँधी
कि, एक-एक फर्काइदिनेछ
सारा आइमाईहरुको -फरियाइज्जत !

ताल्चा तोडेर
कसम र इमानका
मजबुद तर कमजोर दैलोहरुका,
मान्छेहरु
सरासर भित्र पसिरहेछन्
मेरो देशमा
र, थुन्चेले छोप्दा पनि भाग्ने
ढिकीले कुट्दा पनि नमान्ने
भोटेको कुकुर

डामेर छोडिरहेछन्
देश नपाकेको चुल्होछेउ

यसैले पनि
कुकुरले जुठो हालेको देश
म औसनी चढाउन सक्तिन ।

तखतामा राखेको गौतम बुद्ध
ह्वाल्-ह्वाल्ती रगत छादेर
मर्छन् भने
या तखताकै बुद्ध
पुच्छरमा झुण्ड्याएर
खोला तर्छ भने -भोटेको कुकुर,
साङ्लोले बाँध्न नसकेको
बुद्धको नाउँमा
म पश्चातापले
कुकुरले जुठो हालेको देश
औसनी चढाऊँ ?

बुद्धको मलामी हिंडेका
तिनका सन्तानहरु
र, सगरमाथाको ढिंडो खाएर
फेवातालको दालमा
पौडी खेल्ने झिंगाहरु
तिमीहरुलाई
कुकुरले जुठो हालेको देश
मीठो लाग्यो हगि ?

हो त्यसैले
कुकुरले जुठो हालेको देश
म
औसनी चढाउन सक्तिन ।
ά

# बाँचेको छु / हाँसेको छु

ल्न नसकेर
झोस्दा-झोस्दा
र
ठोस्सिंदा-ठोस्सिंदा
ठूटो भएर
चुरोटको खिल्ली
बाँचेको छु ।

हाँसेको छु
हाँसेको पनि छु
हाँसिरहेको छु
तर
डेन्टिष्टको साइनबोर्ड !
ά

# पूर्वप्रेमीको वर्तमान छोरालाई..

यद
तेरो निधारमा
मेरो प्रेमको 'चोप' चुहिएको छ ।
तेरो अनुहारमा
मेरो अनुहार ओर्लिएको छ ।
तेरो शरीरका हाँगा-हाँगामा
मेरो रगत थेग्रिएको छ ।

एकपटक
आमाको ऐना पढिस् भने
यसरी

अकस्मात्, दोबाटोमा भेट्दा
तैंले हात जोडेर
'प्रणाम'
गर्नुपर्छ बुझिस् -मलाई ।

एउटा हाँगो
भाँचिदिएकी छे
तेरी आमाले मेरो जिन्दगीको
र, उभ्याएकी छे तँलाई
तर
'बूँद' दोष देख्दिनँ तेरो टाउकोमा
बरु, थाहा छ तँलाई ?
तँ जन्मनुअघि
मेरै घरमा थिइस्
जसलाई बा बा भन्छस्
तेरी आमा खलनायिका हो उसको ।
जसलाई भाइ 'नरेश' भन्छस्
खलपात्र हो उसको
र, जसलाई बहिनी 'सरीता' भन्छस्
त्यो त व्यङ्ग्यपात्र हो
तेरो बाउको

त्यसैले
कुनै घुम्तीमा पनि
आमाको अनुहार छैन तँसँग
र, आमाको अनुहार पनि
नखोज्नू आफूमा
तँ यहाँबाट गइहाल
म त हरेक सपनामा
तेरो बाउलाई
जगल्ट्याएको मात्रै देख्छु बुझिस् ।
ő

# देशप्रति

ण्डीफोर आएको देश काखी च्यापेर
एक हुल मुसाहरु
गोल्टिनभित्रै अड्किरहेछन् ।

पीलो पलाएको तिघ्रा चपाएर आफ्नै देशका
जङ्गबहादुरहरु
चन्द्रशम्सेर हाँसिरहेछन् ।

गौतम बुद्धहरु भागेर देशबाटै
खोई, कहाँ गए ?
लेण्डुपदोर्जे र जर्ज बुशहरु पसेर
पड्काइरहेछन् 'बुदुने गाउँहरु'

ग्याँसच्याम्बरभित्र थुनिएर आकास
मेरो छातीमा कुर्कुच्चा ठटाउँछ
र, टीका लगाउन खोज्छ बन्दूकको ।

एक जमात मान्छेहरु
जन्ती हिंडिरहेछन् देशको
देश अन्मिएको आँगनमा
अलिकति ठेस खसिसकेको छ
अलिकति विदेश खसिसकेको छ
आँगन काटेर पनि
देशले गाउँ छोडेको छैन
पिंढी छोडेर पनि देशले
डाँडा काटेको छैन
हामी बेहुली फर्काउन चाहन्छौं भने
हामी देश फर्काउन चाहन्छौं भने
ए, सुत्केरी आमाहरु

कोक्रोभरिका बचेराहरु उठाऊ
गलगाँड फ्याँकेर
ए, लाहुरेदाइ
ए, पम्फा जाऊ
आऊ, ए मैना, गुना र सुन्तलीहरु
आऊ -निचोरेर फ्याँक
स्तनहरुबाट इन्द्रावती र सुनकोशीहरु ।
ó

# एक चोक्टा वर्तमान

दलको आडबाट
चिप्लिएको
घामका रापिला खुट्टाहरु
प्रत्येक दिनको टुसामा
रेडियोले छादेका
मान्छेहरुको लाशका
बाबर खाएर
सन्ध्या बिष्ट्याउँदै
अम्बर उक्लिन्छ ।

धर्तीको नाइटोमा
चुहिएर जून
जंगल-जंगल बल्छी हान्छ
र, सडक पखाल्छ
रगतले ।

आकाश पोखिएर
रगतको बूँद ढाकिइरहेछ ।

एक चोक्टा ‘नेपाल’ लुछ्न
लेण्डुपदोर्जेहरु
मेलो पसिरहेछन्
अपितु
घातको भुस
र, प्रतिघातको काउसोले
रजस्वलाको रगतमा
चोपलिरहेछ ‘गौतम बुद्ध’ ।
ó

# प्रस्थानअघिका प्रश्न

टुहरुका चट्टानबाट चिप्लिएर
मेरो जीवन
फस्दै-फस्दै छ
तिम्रो रगतको पोखरीमा
भन,
यहाँ रगतको व्यापार हुन्छ कि हुँदैन ?

भत्केका मान्छेहरुको
सुन्दर लाशहरु बोकेर
ऊ..... त्यो चिहानछेउ
तिमीलाई पोल्न आएका हुन्
ती रङ्गीचङ्गी मलामीहरु ?
भन,
चिहानमा लाशको व्यापार हुन्छ कि हुँदैन ?

प्रयोगशाला
अर्थात, जीवन (?)
फूल चुँडेर बाटोमा फ्याँक्ने को होला ?
र, कुल्चिएर हिंड्ने
तिमी नहुनु पर्छ ।

तिम्रो सपनाको फिंजले भिजेको

मेरो जीवनको फेर
अब सुक्ने छैन घाम बलुञ्जेल
तर भन
जीवनमा मनको व्यापार हुन्छ कि हुँदैन ?
मनमा जीवनको व्यापार हुन्छ कि हुँदैन ?
ǿ

# परेवाका कंकालहरु

द्धको लिउन लागेको
मुटु बोकेर
लुम्बिनी चोपलिरहेछौ रगतमा
ग्लानि पस्किंदैनन्
परेवाका कंकालहरु ?

सगरमाथा छप्काइरहेछौ
विध्वंशका वञ्चराहरुले,
चुसेका मातृस्तनहरु
ताछिरहेछौ
घातका कोदालीहरुले
विश्वासमा खिया पर्ला है देशको
काउसोझैं चिलाइरहेका
ए ! तिमीहरुलाई
सपनीमा भित्ताभरि झुण्ड्याएर
ग्लानि पस्किंदैनन्
परेवाका कंकालहरु ?

गाउँमा भ्याकुर च्याँट्टिएको छ
जन्ती र हलीहरु बाउँडिएका छन्
मसानमा 'मान्छे' मन्छिरहेछन् मान्छेहरु ।
सन्नाटा छ,
जूनकिरी बल्दैन हिजोआज गाउँमा
चुरौटेहरु पिटिएका छन्
सिन्दूर पसलेलाई सञ्चो 'नाई'
धूरीमा मृत्युल्का खसालिरहेछौ
ग्लानि पस्किंदैनन्
परेवाका कंकालहरु ?

बाँझा खेतहरु गिज्याइरहेछन्
चित्ता चढेका मूर्दाहरुलाई
कलमका भूत्तेटाउकाहरु
भोकले काँपिरहेछन्
ग्लानि पस्किंदैछन्
परेवाका कंकालहरु ?
ǿ

# उस्तै देश, उस्तै जीवन

आगो र त्यो खर
यो कलह र त्यो घर
सायद, यो देशको जगल्टा
र मेरो जीवनको कचेरा
उस्तै गृहयुद्धहरु हुन्
जहाँ
सुस्त-सुस्त सूर्यको प्राण जान्छ
र दागको वितृष्णामा
चन्द्रमाले आत्महत्या गर्छे ।

यो बाटो र त्यो बाढी
यो आँसु र त्यो यातना
सायद, यो देशको सगरमाथा
र मेरो जीवनको टुपी
उस्तै-उस्तै त्रासहरु हुन्
जहाँ

बिस्तारै-बिस्तारै राखेर काखमा
आफन्तले छुरी रोप्छ
र मेरी स्वास्नी पोइल जान्छे ।

त्यो कुहिरो र यो चुरोटको धुवाँ
त्यो छोडपत्र र यो प्रेमपत्र
सायद यो देशको रक्तिम इतिहास
र मेरो जीवनको मृत अनुभव
उस्तै-उस्तै लाग्ने
जात्रा र रत्यौलीहरु हुन्
जहाँ
क्रमैसँग आइमाईहरु
आफ्नो फरिया
उतार्दै-उतार्दै जान्छन्
र म लाजले मरेर -'भाग्छु' ।

*२० भदौ ०६२*

á

# कञ्चन प्रियदर्शी

क्षरका इन्द्रावतीहरु पोखेर कलमले
भत्काउँदै-भत्काउँदै लग्यो
बादलका थुम्काहरु
र, आकाश देखाउन खोज्यो -अन्धाहरुलाई ।

कहिल्यै हिसाब मिलेन
उसको जिन्दगीको ।

खकन गाँसेको झोला
तुना खुस्किरहने हातीछापे जिन्दगी
र
दुबैतिर धार भएको तरबार
अर्थात् पत्रकारितामनसँग
अनवरत् समय पिइरह्यो ।

निरन्तर चुसेछन् घामहरुले
र, छायाँ खोज्दा....

ऊ अर्थात् कञ्चन
अन्धकारको जंघार हान्नियो
दुर्भाग्य, त्यही अँध्यारोमा
एउटा जिन्दगी निस्तेज भयो ।

आजकल
उसको लाश रोपिएको माटो टेकेर
कलम चोपलिरहेका हातहरु
सम्झनाको शब्दाहुतिबाट पन्छिरहेछन्
अनि
बिर्सिरहेकाछन्
'उस्तै मृत्यु' ।

á

# अन्त्यपछि

स गर
उसले छोरीको लाश उतार्ला चिहानबाट
र, लगेर सिंहदरबार वा राजदरबारअगाडि
भन्ला -मेरो छोरी फिर्ता गर ।
वा, सुप्रिम कमाण्डरको
भूमिगत अदालतमा पुग्ला
र एक-एक अङ्ग उल्टाउँदै

भन्ला -सुनिनस् -मेरो छोरी फिर्ता गर ।

ऊ बेसुर भएको छ ।
मात्र ठानिरहेको छ आफूलाई
मृत छोरीको अर्धमृत-पिता ।
र, हातमा, हृदयमा
मृत-छोरीका पूर्वचित्रहरु बोकेर
पटक-पटक हुत्तिइरहेछ
हर्सिते र भूमेडाँडाहरुमा ।

खबरदार !
उसले एकएक छिनाल्न सक्छ
गाउँलेका टाउकाहरु
यदि लाश बुझ्यौ भने -उसकी छोरीको ।
त्यसैले होस गर
घाँस काट्न गएकी छोरीलाई मार्नेहरु
उसले छोरीको लाश उतार्न सक्छ चिहानबाट
र, अंगअंग भाग लगाएर
तिम्रो सुप्रिम कमाण्डरलाई भन्न सक्छ
ब्यूँताइदे -मेरी सगोल छोरी ।
वा राजदरबारको मूलढोकामा उभिएर
उसले भन्न सक्छ
महाराज, तेरो देशमा
कलिला मेरा छोरीहरुलाई मारे
घाँस काट्न गएकी ऊ ल्याण्डमाइनमा परी
ब्युँत्याइदे मेरी छोरी
या मार तैंले आफ्नो एउटै पुत्री ।

*७ वैशाख, ०६३*

á

# जून, घाम र म

जून–
चुहिएर आफैबाट
जुनकिरीको हत्यागर्दै
युद्ध अन्माइरहेछ
जङ्गलमा ।
घाम–
रन्किएर अबोध अगेनोबाट
ध्वाँसको तेजाब खन्याउँछ
हिउँदको धर्तीमा
र, अमिलो योजनाको
षड्यन्त्र अचाउँछ
संघर्षका सेनाहरुलाई ।

म–
आलिशान जङ्गलमा छु
गन्तव्य दूर छ
'क्रान्ति' पल्किएकी/सल्किएकी छे
समर्पणको खेती सप्रिएको छ
मेरो हत्या/खरानीले
ऊ सप्रिन्छे/फस्टाउँछे
त्यसैले......
मलाई यतै रहनदेऊ ।

á

# विधवा जून

तना पिएर
ढुन्मुनिएपछिको
कुकुरलेझैं
मझेरीमा पसारो परेर
मेरो मुहार कोतरिरहिछे

निजी उसकै नजरले
म कुकुरदेखि
अवाक् मालिकझैं
आक्रोशको आँखा घोप्टाइरहेको हुन्छु
ऊमाथि ।

मेरो हातमा चिर्पट छैन
तर
आकांक्षाको हत्यागर्दै
धमिलो विवशता ओढेर भाग्न खोज्छे
लुसुक्क
मलिसाँप्रोझैं

उसैगरी मेरो मझेरीमा
पुनः, पुनः र पुनः
आउँथी, आउँछे र आइरहन्छे
हिजोआज
भयको एउटा सर्पको डरले
म रातभर सुत्दिन ।

मझेरीमा एउटा साँध बारेको छु
ऊ दिनहुँ
पाइलो-पाइलोका भूगोलमा
मलाई मिचिरहेकी छे ।
खैर
छुट्टिन सक्दिन
र टोक्दिन
गुहारको लीड पनि ।

समयको यही चोक्टा
लुछ्दा-लुछ्दा
म खिएको छु
सायद, निखिन सक्छु ।
ó

# अमिलो घाउ

निका कन्याङकुरुङहरु
स्वयंमाखाकै नाइटोमा
मारिएपछि
हत्याको हाडेउन्यूमा फुलेको 'गन्तव्य'
मृत्युको पहाड पिएर
नाङ्लोभरि हाँसिरहेका
मूर्दाछिचिमिराझैं
हाँसिरहेछ -बगरभर ।

खिया लागेको आँखा,
चट्याङ परेको छाती
र, ऐंजेरु मन
पलपलमा
यमराजको निम्तोपत्र
पढिरहेछ
र, फेरि
बाँच्ने बेचैनको चिलिममा
विवशताको भुङ्ग्रो
रापिलो छ ।
ó

# सिर्फ क्याक्टस् भएर....

रगतले कर्णाली सप्रियो,
न मासुले धौलागिरि मोटायो,
हाडले न सगरमाथा उचाल्न सक्यो
न त श्वासले नै

शत्रु सुमर्न सक्यो
अपितु
सबै-सबै ती बोकेर आफैलाई खैंचिरहने
म कहाँ छु ......?

बैरीबधमा तल्लिन
कुकुर हुन सकिन
समर्पित मासुको
सुँगुर हुन सकिन
थुकीयजिन्दगी
अर्थात्
सिनो बाँच्नुको के अर्थ ?
म सिनो बाँचिरहेछु ।

मासु नै मासुको पहाड, अग्लिरहेछु
देशलाई एक फिर्का छैन,
करडैकरडको भऱ्याङ ठडिएको छ
देशलाई एक टुकुनी हड्डी छैन
निफर जिन्दगी,
कालो, जंगली पुतली,
पेट बोकेकी कंकाल बादल
अर्थात् गुलाफ हडपेर
निस्तो क्याक्टस् बाँचिरहेछु ।
ơ

# ओसिलो जीवन

ण्ठित मनको वरण्डामा
आत्मविश्वासको लाश
पछारिएपछि
लाग्छ,
म मलामी हिंडिरहेछु
आफ्नै गन्तव्यको ।

च्याँख्ला पस्दै गरेको
रातका चानाहरुमा
ऐठनको भूतले
बलात्कार गर्दा
गन्हाउँछ
मलाई
जिजीविषाको झोल ।

सतर्कता होइन
ग्लानिको कुहिरोले
सफलताको ढिस्को
छोपेपछि
रित्तो आँखामा
जिब्रो ओकलेर
झुण्डिरहेको हुन्छ
'एउटा लाश'
ǿ

# देश-जात्रा

नै रोकतोक छैन कसैलाई
विश्वास नै गुमाएपछि
के नियम वा कानून जारी गर्नुपर्छ र जात्रामा
खुकुरी हल्लाए हुन्छ
काटे पनि हुन्छ दुईचार जना जात्रेलीहरु
यो रातको बेला न हो
ओच्छ्याए हुन्छ -आफ्नै दिदीबहिनीहरु
सक्छौ ?
सक्छौ भने -दिनदहाडै ढुकुटी वा बैंकहरु लुट

किचिमिची पारिदेऊ मान्छेहरु
तर आरोप लाग्ला
नडराऊ, सडकमा टायर सल्काउनुपर्छ
के भो र
यो त जात्रा लागिरहने देश न हो ।

तीनपाने रक्सी हो त्यो
हिजो सडकमा पोखिएको
के तिमीले त्यसलाई सहिदको रगत ठान्यौ ?
होइन
होइन त्यो जनताको ज्यानै होइन
जात्रा हेर्न आएकाहरु मरे
के भो र
पोल्नुपर्छ आर्यघाटमा लगेर
र, सम्भिनुपर्छ सेकुवा
अनि पिउनुपर्छ जात्रामा तीनपाने ठर्रा ।
किन उदास हुन्छ्यौ मेरी प्रिय यस्तो रमाइलो बिर्सेर
जात्रा हो जात्रा
उफ्रिनुपर्छ, गाउनुपर्छ र नाच्नुपर्छ
किन पिर मानेकी ?
यो जात्रा लागिरहने देश त हो ।

रेफ्री हुँदैनन् जात्रामा
ऊ.... पुजारी हुन्छन् पुजारी
हेर त विचरा !
बलि चढाउन नसकेको -बोकोलाई
कति कामेको छ त्यसको हात
तिमीलाई थाहा छैन -प्रिय
हातभन्दा बढी त त्यसको मुटु कामेको छ ।

अभ्र तिमीले
गाईजात्रा हेरेकी छैनौं हैन ?
भ्रन् जात्रा त गाईजात्रामा पो हुन्छ प्रिय
के थाहा तिमीलाई
त्यहाँ त
गोली ठोक्नेहरुले पद्वी पाउँछन्
जनता भकुर्नेहरुले प्रमोशन पाउँछन्
ज-जसले जनताको शिरमा लात हाने
छाद खाएभ्रैं
तिनीहरु नै मन्त्री खान्छन्
आखिरमा यिनीहरु बदलिनै सक्दैनन्
जसरी कुकुरलाई भात पच्दैन
र, ऊ चर्पी धाउँछ
हो, त्यस्तै भइरहेको छ -प्रिय देशमा
तिमीलाई के थाहा
घोडा लङ्गडो भएपछि -मार्नुपर्छ भनेर
गाईजात्रामा त
मान्छेहरु नै पशु बन्छन्
र त लङ्गडो घोडालाई पनि पूजा गरिन्छ
जो, एक पाइलो पनि अघि बढ्न सक्दैन
र, पछारिन्छ -उभिएकै चौरमा
हो, प्रिय यो देशमा गाईजात्रा पनि मनाइन्छ ।

*५ भदौ, ०६३*

ό

# उसको राग

रेटो किनारमा
निष्ठुरीको रुमाल
ऐजेरु बन्दा
उसलाई ओच्छ्याउन नसकेको
खबरको तन्नामाथि
विवशताको खोल थपेर
आफैले ओढ्नुपर्दा

चोइटिरहेको हुन्छु
'म' ।

सम्झनाको सर्पले
सर्वत्र डसेपछि
वर्तमानलाई दल्ने
नौनीको अभावमा
भौतारिंदा-भौतारिंदा
बादल दलेर
आकाश
म
पीडा ओढिइरहेछु
उसकै रागमाथि 'सुतेर' ।
á

# झुठो अनुराग

धाइको श्रद्धाञ्जली सभा
जहाँ म पुरिएको थिएँ
अन्त्यष्टिका मालाहरुले
मलाई मेरी प्रेमिकाहरु
चढाउँदै थिए विज्ञापनका थुङ्गाहरु
र झुठो अनुरागको सती जान्थे
आफ्नै विज्ञापनका
चाडहरुबाट हाम्फाल्दै ।

म मर्दै-मर्दै
डायरीका अक्षरहरुमा
आफै जलेको खरानी पखाल्थें
उनीहरु
मेरै अक्षरको कछाड लगाउँथे
शीतको थोपामा
डुबेर मरेको
मेरो अभिलाषाको भुसुनो देखेर ।
उनीहरु
थप्पडी बजाउँथे
म झन् मारिएको थिएँ
र, मलाई थुनिएको थियो
आवागमनहीन हावाको
शौचालयभित्रै
जहाँ म पुरिएको थिएँ
अन्त्येष्टिका मालाहरुले
त्यो बधाइको श्रद्धाञ्जली सभा थियो ।

कदरका बथानहरु लखेटेर
भुटुन नचुहिएको कसौंडीबाट
मेरो पात्रो
मन्छिंदै दोबाटोहरुमा ।
ती झाँक्रीहरु काम्दै थिए
कालो दिनको अँध्यारो मध्यान्हतिर
तर म हेरिरहेको थिएँ
बाढीले बगाइरहेको
आफ्नो नवजात शिशु नियाल्दै गरेकी
निरीह आमा ।

र त्यो साँच्चै
बधाइको श्रद्धाञ्जली सभा थियो
जहाँ म पुरिंदै थिएँ
अन्त्येष्टिका मालाहरुले ।

*२८ जेठ, ०६१*

á

# अमृत सम्झना

वन हो,
हिंड्नुपर्छ फूलहरु ओछ्याएर पनि
भेटिन सक्छ - छुटिन सक्छ
भमरा बच्छ्यूँ र
अरिङ्गालहरुसँग
फरक - जीवनको घाउहरुमा छ ।

जीवन हो,
हिंड्नुपर्छ चिहानहरुमा पनि
भेटिन सक्छ - छुटिन सक्छ
मूर्दाहरु, मलामीहरु र
पुजारीहरुसँग -
फरक जीवनका बुझाइहरुमा छ ।

माटो हो जीवन
पहिरो जान सक्छ, घर बन्न सक्छ
र लाश गाडिन पनि सक्छ
फरक - मनको हेराइमा छ ।

सपनाहरु, जुट्न सक्छन्, फुट्न र मिल्न सक्छन्
म तपाईंको सपनाको विछोड हेर्न सक्दिन ।
á

# प्रतिअन्तर

गली फूलका
काँचै र आला मनसँग
कवाज लडिरहन्छ
सिमलको भूवा !
बगैंचामा
सिउडीका काँडाहरु
गुराँसको ओठसँग चुम्बन गर्छन् ।

चकनाचुर आँखामा
चोइटा सपना
बम्फसेल सडिरहेको जिन्दगीसँग
नियति निचोर्दै
एउटा मुटु
सापटी मागिरहन्छ ।

बगराभास छातीमा
क्याक्टस मोटाइरहेछ
निस्सार संसारसँग
रगतको प्रतिविम्ब
विधवा छे ।
á

# पुस्ते-भ्यागुतो

यामको व्यापारका लागि
समयको छाती निचोरेर
स्वरक्षार्थ
अझै फिला हल्लाइरहेछ
कुवाको डिलबाट
एउटा पुस्ते-भ्यागुतो ।

हुनसक्छ,
ऊ अन्तिम योद्धा हो
वा उपअन्तिम नायक
र, पनि
मृतगोटी चलाइरहेछ
कुवाको चेसबोर्डबाट ।

जब जूनलाई लाज लाग्छ

ताराहरु मुहार छोप्छन्
र, आकाश
बादलको फेरले आँखा छोप्छ
अफसोच्
बिर्सेर युगको उफान
अझै फिला हल्लाइरहेछ
कुवाको डिलबाट
पुस्ते-भ्यागुतो ।

कुवाभित्रै
पानीको मृत्यु हुन सक्छ
रुखहरुको सम्झौता बेगर
थाहा छ, र पनि
रुखहरुलाई निमोठ्न खोज्छ
विचरा भ्यागुतो ।

शानको असभ्य तालमा
चपाउन खोजेर
कुवाको सभ्यता
अझै फिला हल्लाइरहेछ
कुवाको डिलबाट
पुस्ते-भ्यागुतो
विचरा भ्यागुतो ।

á

# साला, काठमान्डू !

म जोड्न खोज्छ
कहिले वासिङ्टन डीसीसँग

कहिले लण्डनको जुठेल्नो हेरेर घोरिन्छ
भर्खरै बाउ मरेको छोरोजस्तो !
र, कठालोमा समात्न खोजेर
नमस्कार गर्छ
त्यसका ठूलाबाउहरुलाई

थुक्छ, आफ्नै हातमा
र हात मिलाउन खोज्छ
पत्रु भइसकेको एउटा शत्रुसँग
फेरि,
कालापानीको बगरमा उभिएर
सलाम गर्छ -उसैलाई

अपुताली वा काक्ताली
कुनै  खुशी छैन आँखामा
प्रजातन्त्रको काँचो मासु डकारेर
अझै झम्टिन खोज्छ
आवाज र अक्षरहरुमाथि
शिकार नपुगेको बाघजस्तो
साला, काठमान्डू !

टिलो टिपिरहेको जोगीजस्तै
समयको भिख माग्छ
लाज र डर गुमेपछि
के के गर्न सक्छ मान्छेले ?
भर्खरै लाश लगेको दोबाटोबाट
बुर्की टिपेर
अक्षता हेरिरहेछ आफ्नै भाग्यको
साला, काठमान्डू !

आफूलाई ‘न्यूयोर्कको ब्वाइफ्रेण्ड’ सोच्छ

वा,
नयाँ दिल्लीको जार
स्वयम्लाई सिङ्गो देश मान्छ
र, सब 'वेसै छ ठान्छ'
आफूलाई हेरेर

मलाई त एकदमै डर लागिरहेछ
हिजो खोला बेचेर खाएको छ
माटो बेचेर खाएको छ
इज्जत र स्वाभिमानको के कुरा
भोलि झण्डा बेचेर खाला
के भर
काखमा राखेर छुरा धस्न सक्छ
साला, काठमान्डू !

आऊ,
ए गाउँलेहरु
छिन्यो भने पनि
हातमा चट्टी बोकेर आऊ
खाँदैछौ भने पनि
जुठै हात बोकेर आऊ
काठमान्डूले झण्डा बेच्न सक्छ
काठमान्डूले देश बेच्न सक्छ
के भर
साला काठमान्डूको !
ó

# मान्छेका प्रहसनहरु

मयका थाङ्नाहरुमा
जुनको मुहारजस्तै
जीवन खिपेर
खिल परेका आँखाले
जीवनपरिणामको प्रारुप कोर्न खोज्छ
तर
हरेक प्रारुपका पहाड
विम्बमा नउभिदै गर्ल्याम्म ढल्छन् ।

.....तर
प्रारम्भ
भरपर्दो एउटा आश्चर्य
सम्भव-सत्य
वा समयको अन्त्य
एउटा अविश्वस्त-यथार्थ ।

'समयको आत्महत्या' बाट

ओ, अन्तिम घडीका मेरा सपनाहरू !
आत्महत्या गर्नुपर्थ्यो तिमीहरूले
किन जिउँदै छौ मृत्युदण्डका लागि ?
थाहा थिएन आत्महत्या मृत्युदण्डभन्दा
उत्तम हुन्छ ?
र पनि तिमीहरू बाँचिरह्यौ ।
अब अन्तिमजवाफ देऊ ।

'मुर्दाघर हुँ म' बाट

छिट्टै, एक साँझ
सब सल्किनेछ
पोष्टकार्डहरूसँगै उनको तस्वीर पनि
र, हृदयको यही भुम्रोले पुछ्नेछ
मनको शिलामा लेखिएका
काँचो प्रेमका अक्षरहरू...

'प्रेमोत्कर्ष' बाट

सिर्फ, अभावका उपहार हुन
यी प्राप्तिका पोकाहरू
न कहिल्यै अभाव निख्रिन्छ
न सकिन्छन् -प्राप्तिका पोकाहरू ।

'अभाव यात्रा' बाट

आँखाको चिलिममा
पिरतीको पातो घोप्ट्याएर
पछि
क्यान्सर लाग्ने
जान्दा-जान्दै पनि
म तमाखु तानिरहेछु
तिम्रै सम्झनाको ।

सम्झनाको तमाखु




प्रेम बानियाँ
कुन्चोक-४, सिन्धुपाल्चोक
email: baniyaprem@yahoo.com